# हातहतियार खरखजाना ऐन, २०१९

| | लालमोहर मिति | प्रकाशन मिति |
|---|---|---|
| संशोधन गर्ने ऐन | २०१९।१०।२२ | २०१९।१०।२३ |
| १. न्याय प्रशासन सुधार ऐन, २०३१ | २०३१।४।१८ | २०३१।४।१८ |
| २. केही नेपाल ऐन (संशोधन) ऐन, २०४३ | २०४३।७।२४ | २०४३।७।२४ |
| ३. न्याय प्रशासन सुधार (चौथो संशोधन) ऐन, २०४३ | २०४३।७।२४ | २०४३।७।२४ |
| ४. हातहतियार खरखजाना (पहिलो संशोधन) ऐन, २०४८ | २०४८।७।११ | २०४८।७।११ |
| ५. न्याय प्रशासन ऐन, २०४८ | २०४८।२।१६ | २०४८।२।१६ |
| | | प्रमाणीकरण र प्रकाशन मिति |
| ६. हातहतियार खरखजाना (दोस्रो संशोधन) ऐन, २०६४ | | २०६४।९।२२ |
| ⇒७. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ | | २०६६।१०।७ |



**२०१९ सालको ऐन नं. ४५**

## हातहतियार खरखजाना सम्बन्धी नेपाल कानुनलाई एकीकरण तथा संशोधन गर्न बनेको ऐन

**प्रस्तावना** : नेपालको सुरक्षा एवं शान्ति र व्यवस्था कायम राख्नको निमित्त हतियार खरखजाना सम्बन्धी प्रचलित नेपाल कानुनलाई एकीकरण र संशोधन गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेकोछ ।

**१. संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यो ऐनको नाम "हातहतियार खरखजाना ऐन, २०१९" रहेकोछ ।

---

⇒ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको, प्रशस्ती र अधिराज्य शब्द झिकिएको ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

तर नेपाल सरकारको आदेशबमोजिम वा कुनै सरकारी कर्मचारीको हैसियतले आफनो कर्तव्य पालन गर्दा निजले दिएको आदेशबमोजिम हातहतियार खरखजाना बनाउन, मरम्मत गर्न, एक रूपबाट अर्को रूपमा परिणत गर्न, बेच्न, बिक्रीको लागि दिन, लिएर हिड्न, आफू साथ वा आफनो नियन्त्रणमा राख्न, नेपालबाट विदेशमा निकासी गर्न, विदेशबाट नेपालभित्र पैठारी गर्न वा नेपालभित्रको एक जिल्लाबाट अर्को जिल्लामा ल्याउन लैजानमा यो ऐनका कुनै कुरा लागू हुने छैन ।

(३) यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको मितिदेखि प्रारम्भ हुनेछ ।◆

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "तोप" भन्नाले सबै किसिमको तोप, मार्टरहरू र त्यसको पार्ट पूर्जाहरू, त्यस्तो तोप वसार पसार र चढाउनका लागि प्रयोग गरिने गाडीहरू र त्यस्तो तोप बनाउने कल मेसिनलाई समेत जनाउँछ ।

(ख) "मेशिन गन" भन्नाले ब्रेन गन, लुइस गन, स्टेशन मेशिन कारबाइन, टम्सन मेशिन कारबाइन र सो सरहका अटोमेटिक हतियारहरू र त्यसको पार्टपूर्जाहरू, त्यस्तो मेशिन गन ओसार पसार र चढाउनका लागि प्रयोग गरिने गाडीहरू र त्यस्तो मेशिन गन बनाउने कल मेशिनलाई समेत जनाउँछ ।

(ग) "हातहतियार" भन्नाले राइफल बन्दूक, पिस्तौल, रिभाल्भर, माईनिङ्ग र ग्रिनेड, त्यसका पार्टपूर्जाहरू र त्यस्तो हातहतियार बनाउने कल मेशिनलाई समेत जनाउँछ ।

(घ) "खरखजाना" भन्नाले फगसिग्नल (धुमिका संकेत) फ्युज, बारुद, केप, गोला, छर्रा, पडकाउने बस्तु (डिटोनेटर) कार्तुस ♣त्यस्तै किसिमको विष्फोटक पदार्थ र अरू खरखजानाहरूलाई समेत जनाउँछ ।

(ङ) ✂.... ....

---

◆ यो ऐन मिति २०२०।९।१ गतेदेखि प्रारम्भ हुने गरी तोकिएको (नेपाल राजपत्र मिति २०२०।९।१५) ।

♣ दोस्रो संशोधनद्वारा संशोधित ।

(च) “लाइसेन्स” भन्नाले हातहतियार, खरखजानाका सम्बन्धमा यो ऐनबमोजिम प्राप्त भएको लाइसेन्स र “लाइसेन्सवाला” भन्नाले त्यस्तो लाइसेन्स प्राप्त गर्ने व्यक्तिलाई सम्झनुपर्छ ।

(छ) “तोकिएको” वा “तोकिए बमोजिमको” भन्नाले यो ऐन अन्तर्गत बनेको नियम वा आदेशमा तोकिएको वा तोकिए बमोजिमको सम्झनुपर्छ ।

३. **तोप, मेशिन गन र लाइसेन्स नभई हात हतियार, खरखजाना बनाउन, ♣आफूसाथ राख्न वा अन्य स्थानमा राख्न वा राख्न लगाउन, एक रूपबाट अर्को रूपमा परिणत गर्न र बिक्री गर्न समेत मनाही** : (१) कसैले तोप वा मेशिन गन बनाउन, मरम्मत गर्न, ♣आफूसाथ राख्न वा अन्य स्थानमा राख्न वा राख्न लगाउन, एक रूपबाट अर्को रूपमा परिणत गर्न वा बेच्न वा बिक्रीको लागि दिन समेत हुँदैन ।

(२) लाइसेन्स नलिई वा लाइसेन्समा तोकिएको शर्त बन्देजमा नरही कुनै व्यक्तिले हातहतियार वा खरखजाना बनाउन, मरम्मत गर्न, ♣आफूसाथ राख्न वा अन्य स्थानमा राख्न वा राख्न लगाउन, एक रूपबाट अर्को रूपमा परिणत गर्न वा बेच्न वा बिक्रीको लागि दिन, राख्न समेत हुँदैन ।

तर आफनो निजी उपयोगको निमित्त कानुनी तवरबाट हातहतियार वा खरखजाना राखेको कुनै व्यक्तिले सो हातहतियार वा खरखजाना तत्काल लागू रहेको कानुनले निषेध नगरिएको अरू कुनै व्यक्तिलाई बेच्नमा उपदफा (२) का कुनै कुराले बाधा पुऱ्याउने छैन । त्यस्तो हातहतियार वा खरखजाना बेच्नु पर्दा किन्ने व्यक्तिको नाम, ठेगाना र बिक्रीको कुरा खोली प्रमुख जिल्ला अधिकारी छेउ पूर्व सूचना दिनु पर्छ ।

४. **ल्याउन वा लैजान मनाही** : (१) कसैले तोप वा मेशिन गन विदेशबाट नेपालभित्र ल्याउन, नेपालबाट विदेशमा लैजान वा नेपालको एक जिल्लाबाट अर्को जिल्लामा ल्याउन लैजान समेत हुँदैन ।



---

⁓ पहिलो संशोधनद्वारा झिकिएको ।

♣ दोस्रो संशोधनद्वारा संशोधित ।

(२) लाइसेन्स नलिई वा लाइसेन्समा तोकिएको बन्देजमा नरही कुनै व्यक्तिले हातहतियार वा खरखजाना विदेशबाट नेपालभित्र ल्याउन, नेपालबाट विदेशमा लैजान वा नेपालको एक जिल्लाबाट अर्को जिल्लामा ल्याउन लैजान समेत हुँदैन ।

५. **लाइसेन्स बेगर हातहतियार लिएर हिड्न मनाही** : (१) कुनै व्यक्तिले लाइसेन्स नलिई वा लाइसेन्समा तोकिएको शर्त बन्देजमा नरही हातहतियार लिएर हिड्न हुँदैन ।

(२) लाइसेन्स बेगर वा यस ऐनका विरुद्ध हातहतियार लिएर हिड्ने कुनै व्यक्तिलाई सहायक निरीक्षक दर्जा वा सो भन्दा माथिल्लो दर्जाका प्रहरी अधिकृत वा प्रमुख जिल्ला अधिकारी वा निजले खटाएको व्यक्तिले विना वारेण्ट गिरफ्तार गर्न र निजले साथमा लिएको हातहतियार कब्जा समेत गर्न सक्नेछ । त्यस्तो व्यक्तिलाई गिरफ्तार गर्ने वा हातहतियार कब्जा गर्ने प्रहरी अधिकृत वा प्रमुख जिल्ला अधिकारीबाट खटिएको व्यक्तिले सो गिरफ्तार गरिएको व्यक्ति र कब्जा गरिएको हातहतियारलाई बाटोको म्याद बाहेक २४ घण्टा भित्र प्रमुख जिल्ला अधिकारी छेउ बुझाई दिनुपर्छ ।

✚५क. **निर्वाचन अवधिमा हातहतियार लिएर हिड्न मनाही** : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि ⊛निर्वाचन आयोगले प्रचलित कानुनबमोजिम गराउने निर्वाचनमा उम्मेदवारको लागि दरखास्त दिने मितिदेखि निर्वाचनको परिणाम घोषणा भएको सात दिनसम्मको अवधिभर सुरक्षा सम्बन्धी सरकारी कर्मचारी बाहेक अरू कसैले निर्वाचन क्षेत्रमा लाइसेन्स प्राप्त हातहतियार पनि लिई हिड्न हुँदैन ।

(२) कसैले उपदफा (१) को बर्खिलाप हातहतियार लिई हिडेमा लाईसेन्स नभएको हातहतियार लिएर हिंडेको सरह मानी निजलाई दफा ५ बमोजिम कारवाई हुनेछ ।

६. **शंका लागेमा हातहतियार, खरखजाना, ल्याउने लैजाने व्यक्तिहरूको खानतलासी लिई पक्राउ गर्ने** : (१) लाइसेन्स बेगर वा लाइसेन्स भए तापनि कुनै गैरकानुनी काम गर्ने हेतुले कुनै व्यक्तिले हातहतियार वा खरखजाना नेपालबाट विदेशमा वा विदेशबाट नेपालभित्र वा नेपालको एक जिल्लाबाट अर्को जिल्लामा ओसार पसार गरेको शंका लागेमा सहायक निरीक्षक दर्जा वा सो भन्दा माथिल्लो दर्जाका प्रहरी अधिकृतले त्यस्तो व्यक्तिको जीउ र त्यस्तो वस्तु भएको शंका लागेको गाडी, पोका, भारी, बोक्ने जवानहरू

✚ केही नेपाल ऐन (संशोधन) ऐन, २०४३ द्वारा थप ।
⊛ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

र वसार पसार गर्दाको बाकसहरूलाई रोकी खानतलासी गर्न र त्यस्तो वस्तु फेला परेमा निजलाई विना वारेन्ट गिरफ्तार गर्न र त्यस्तो हातहतियार वा खरखजाना कब्जा समेत गर्न सक्नेछ ।

(२) यस दफा अन्तर्गत गिरफ्तार गरिएको व्यक्ति र बरामद भएको हातहतियार वा खरखजानालाई बाटोको म्याद बाहेक २४ घण्टा भित्र प्रमुख जिल्ला अधिकारी छेउ बुझाई
दिनुपर्छ ।

७. **खानतलासी गर्ने अड्डा वा चौकी** : नेपाल सरकारले आवश्यक देखिएमा नेपाल सरहद र विदेशी सरहदको सीमानाका बीच हातहतियार वा खरखजानाको तलासी लिने चौकीहरू खडा गर्न सक्नेछ र नेपाल सरकारबाट अख्तियार पाएको व्यक्तिले त्यस ठाउँमा आवत जावत गर्ने गाडी र भारी बोक्ने मानिस वा जीवजन्तुहरूलाई रोकी वसार पसार गर्दा प्रयोग गरिएको बाकसहरू र पोकाहरूको तलासी लिन सक्नेछ ।

८. **कुनै निश्चित ठाउँमा हातहतियार, खरखजाना राख्न मनाही** : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको ठाउँमा तोकिएको कुनै किसिमको हातहतियार वा खरखजाना कुनै व्यक्तिले पनि राख्न नपाउने गर्न सक्नेछ ।

९. **प्रहरी थानामा हातहतियार खरखजाना बुझाउने** : (१) हातहतियार र खरखजाना राख्ने कुनै पनि व्यक्तिको लाइसेन्सको अवधि समाप्त भएमा वा लाइसेन्स बदर गरिएमा वा दफा ८ अन्तर्गत सूचना प्रकाशित भएबाट वा अरू कुनै तरिकाबाट त्यस्तो हातहतियार वा खरखजाना राख्न गैरकानुनी हुन आएमा त्यस्तो हातहतियार वा खरखजाना स्थानीय प्रहरी कार्यालयमा तुरुन्त बुझाई दिनुपर्छ र प्रहरी कार्यालयले पनि बुझी लिई प्रचलित कानुनबमोजिम कारवाई गर्नुपर्छ ।

(२) उपदफा (१) बमोजिम हातहतियार वा खरखजाना बुझाई दिए पछि सो बुझाउने व्यक्तिले यो ऐन अन्तर्गत बनेको नियममा तोकिएको अवधि समाप्त हुनु भन्दा अगावै पनि पुनः देहायको हक प्राप्त गर्न सक्नेछः-

(क) त्यसरी बुझाएको हातहतियार वा खरखजाना आफूसाथ राख्न कानुनी हुन आएमा सो हातहतियार वा खरखजाना फिर्ता लिन पाउने,

(ख) त्यसरी बुझाएको हातहतियार वा खरखजाना कानुनी तवरबाट राख्न पाउने व्यक्तिलाई बिक्री गर्न, गराउन वा त्यस्तो बिक्रीबाट आएको मुनाफा आफूले लिन पाउने ।

तर दफा १६ बमोजिम जफत गरिएको कुनै हातहतियार वा खरखजाना यस उपदफाको कुनै कुराले फिर्ता लिन वा बिक्री गर्न अधिकार दिएको मानिने छैन ।

(३) तोकिएको अवधि भित्र उपदफा (२) बमोजिम फिर्ता नभई जम्मा भएको हातहतियार वा खरखजाना नेपाल सरकारको सम्पत्ति हुनेछ ।

(४) माथि उल्लेख गरिएको दफाहरूको सर्वसामान्यतयामा कुनै प्रतिकूल प्रभाव नपारी नेपाल सरकारले देहायको विषयमा नियम बनाउन सक्नेछ :-

(क) लाइसेन्सवालाले कस्तो अवस्था र परिस्थितिमा हातहतियार वा खरखजाना बुझाउनु पर्ने, र

(ख) कति अवधि समाप्त भएपछि उपदफा (३) अन्तर्गत हातहतियार वा खरखजाना जफत हुने ।



१०. **लाइसेन्स प्राप्त गर्ने वा रिन्यू गर्ने तरिका** : (१) कुनै व्यक्तिले यो ऐन अन्तर्गत लाइसेन्स लिनको निमित्त तोकिएको दस्तूर र तोकिएको ढाँचाको दरखास्त प्रमुख जिल्ला अधिकारी छेउ दिनुपर्छ ।

(२) उपदफा (१) अन्तर्गत कसैको दरखास्त दाखिल भएपछि प्रमुख जिल्ला अधिकारीले तोकिए बमोजिमको आवश्यक जाँचबुझ गरी हेर्दा दरखास्तमा लेखिएबमोजिम काम गर्न पाउने गरी लाइसेन्स दिन मनासिव सम्झिएमा तोकिए बमोजिमको शर्त बन्देज राखी दरखास्तवालालाई तोकिएको ढाँचाको लाइसेन्स दिन सक्नेछ ।

(३) उपदफा (२) बमोजिम दिइएको प्रत्येक लाइसेन्सको अवधि र त्यसलाई रिन्यू गर्ने तरिका, स्थान र त्यसरी रिन्यू गराउँदा लाग्ने दस्तुर तोकिए बमोजिमको हुनेछ ।

११. **लाइसेन्स रद्दी वा स्थगित गर्ने अधिकार** : (१) सार्वजनिक शान्ति सुरक्षाको लागि आवश्यक देखिएमा प्रमुख जिल्ला अधिकारीले कारण सहितको पर्चा खडा गरी आफनो अधिकार क्षेत्र भित्रको सबै ठाउँमा वा त्यसको कुनै भागमा वा सबै वा केही लाइसेन्स रद्दी वा स्थगित गर्न सक्नेछ ।

(२) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमबमोजिम कुनै लाइसेन्सवाला दोषी ठहरिएमा प्रमुख जिल्ला अधिकारीले निजको लाइसेन्स रद्दी वा स्थगित गर्न सक्नेछ ।

(३) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी नेपालभर वा त्यसको कुनै भागमा रहेको सबै वा केही लाइसेन्स रद्दी वा स्थगित गर्न सक्नेछ ।

१२. **खानतलासी लिने, कब्जा गर्ने प्रमुख जिल्ला अधिकारीको अधिकार** : कुनै प्रमुख जिल्ला अधिकारीले आफनो अधिकार क्षेत्र भित्र बसोबास भएका कुनै व्यक्तिसँग विना लाइसेन्स वा गैरकानुनी प्रयोजनको निमित्त कुनै हातहतियार वा खरखजाना राखिएको छ भन्ने भरपर्दो शंका लागेमा, वा त्यस्तो व्यक्तिसँग सो हातहतियार वा खरखजाना राख्न दिनु सार्वजनिक शान्तिको निमित्त उचित हुनेछैन भन्ने प्रमुख जिल्ला अधिकारीलाई विश्वास लागेमा कारण सहितको पर्चा खडा गरी सो पर्चाको आधारमा त्यस्तो व्यक्तिको घर जग्गामा वा अरू शंका लागेको ठाउँमा खानतलासी गर्न गराउन र लाइसेन्स भएको वा नभएको जुनसुकै हातहतियार वा खरखजाना उपर कब्जा गर्न सक्नेछ ।

त्यस्तो किसिमको खानतलासी गर्दा गराउँदा प्रमुख जिल्ला अधिकारीले अरू कुनै अड्डाखानाको कर्मचारीलाई साक्षी राखी मात्र गर्नु गराउनु पर्छ ।

१३. **रोक्का गर्ने नेपाल सरकारको अधिकार** : कसैले हातहतियार वा खरखजाना राख्न लाइसेन्स पाएको भए तापनि नेपाल सरकारले सार्वजनिक सुरक्षाको लागि आवश्यक ठानेमा जुनसुकै समयमा सो व्यक्तिको साथमा रहेको हातहतियार वा खरखजाना कब्जा गरी रोक्का राख्न आदेश दिन सक्छ ।

१४. **लागू गर्ने नेपाल सरकारको अधिकार** : नेपाल सरकारले समय समयमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी कुनै व्यक्ति वा व्यक्तिहरूको सम्बन्धमा वा कुनै खास इलाकामा वा कुनै खास किसिमको हातहतियार वा खरखजानको सम्बन्धमा यो ऐनको

सबै वा केही कुराहरू लागू नहुने वा सोही सूचनामा तोकिएबमोजिम संशोधित भई लागू हुने गर्न सक्नेछ ।

१५. **हातहतियार, खरखजानाको लगत लिने अधिकार** : नेपाल सरकारले समय समयमा सूचना प्रकाशित गरी नेपालभरमा सोही सूचनामा तोकिएको कुनै ठाउँमा कुनै हातहतियार वा खरखजाना राख्ने व्यक्तिले त्यसको लगत तोकिएको अधिकारीलाई दिन निर्देशन गर्न सक्नेछ ।

त्यस्तो सूचना प्रकाशित भएपछि सम्बन्धित हातहतियार वा खरखजाना राख्ने सबै व्यक्तिहरूले तोकिएको अधिकारीले मागे बमोजिमको लगत दाखिल गर्नुपर्छ र निजले त्यस्तो हातहतियार वा खरखजाना नै हेर्न चाहेमा सो समेत देखाउनु पर्छ ।

१६. **हातहतियार, खरखजाना पदार्थ जफत गर्ने अधिकार** : कुनै व्यक्तिले यस ऐन अन्तर्गत सजाय हुने कसूर गरेको सावित भएमा सो कसूर सावित गर्ने प्रमुख जिल्ला अधिकारीले निजसँग भएको कसूरसँग सम्बन्धित सबै वा कुनै हातहतियार वा त्यसको खरखजाना वा त्यसको सम्बन्धमा प्रयोग भएको सवारी, जन्तु, बाकस वा थैली जफत गरी नेपाल सरकार लाग्ने गर्न सक्नेछ ।



१७. **सेना सम्बन्धी हातहतियारको प्रतिवेदन पेश नगरेमा जफत हुने** : कसैले सरकारी वोरको (सेना सम्बन्धी) राइफल, पिस्तौल, रिभाल्भर र त्यस्तै अरू हातहतियार लाइसेन्स लिई झिकाएको भए त्यसको प्रमाण र कम्पनीको बिल समेत तोकिएको अवधि भित्र तोकिएको अधिकारी छेउ पेश गर्नु पर्छ । मुनासिब कारण बाहेक तोकिएको अवधि भित्र सो हातहतियार पेश नगरेमा नेपाल सरकारले विना मुआब्जा त्यस्तो हातहतियार जफत गर्न सक्नेछ ।

१८. **कसूरको सम्बन्धमा सूचना दिनुपर्ने**: यो ऐनले सजाय हुने कसूर गरेको काम कुरा थाहा पाउने प्रत्येक व्यक्तिले मनासिव माफिकको समयमा प्रमुख जिल्ला अधिकारीको कार्यालयमा वा प्रहरी कार्यालयमा उक्त कुराको सूचना दिनुपर्छ ।

१९. **सूचना र कानुनी कारवाईको हदम्याद** : यो ऐनबमोजिम गरेको कुनै कामको निमित्त कुनै व्यक्तिको विरुद्ध देहायबमोजिम नभई नालेश उजूर दिन बाहेक अरू कुनै कानुनी कारवाई चलाइने छैन :-

(क) कानुनी कारवाई चलाउने मनसाय र कारण सहितको लिखित सूचना कमसेकम एक महिना अगावै सम्बन्धित व्यक्तिलाई दिएको, र

(ख) कानुनी कारवाई चलाउनु पर्ने कारण परेको तीन महिनाभित्र त्यस्तो कानुनी कारवाई चलाइएको ।

२०. **दण्ड सजाय** : (१) देहायको कुनै कसूर गर्ने व्यक्तिलाई ♣३ वर्षदेखि ७ वर्षसम्म कैदै वा साठी हजारदेखि एक लाख चालीस हजार रुपैयाँसम्म जरिबाना वा दुबै सजाय हुनेछ :-

(क) दफा ३ को उपदफा (१) को बर्खिलाप तोप वा मेशिनगन तयार गर्ने वा मरमत गर्ने, ♣आफूसाथ राख्ने वा अन्य स्थानमा राख्ने वा राख्न लगाउने, एक रूपबाट अर्को रूपमा परिणत गर्ने, बेच्ने वा बिक्रीको लागि दिने वा राख्ने, वा

(ख) दफा ४ को उपदफा (१) बर्खिलाप जनुसुकै तोप वा मेशिनगन ल्याउने वा लैजाने ।

(२) देहायको कुनै कसूर गर्ने व्यक्तिलाई ♣३ वर्षदेखि ५ वर्षसम्म कैदै वा साठी हजारदेखि एक लाख रुपैयाँसम्म जरिबाना वा दुबै सजाय हुनेछ :-

(क) दफा ३ को उपदफा (२) को बर्खिलाप हातहतियार तयार गर्ने वा मरमत गर्ने, ♣आफूसाथ राख्ने वा अन्य स्थानमा राख्ने वा राख्न लगाउने, एक रूपबाट अर्को रूपमा परिणत गर्ने, बेच्ने वा बिक्रीको लागि दिने वा राख्ने, वा

(ख) दफा ४ को उपदफा (२) को बर्खिलाप हातहतियार ल्याउने वा लैजाने, वा

(ग) दफा ५ को बर्खिलाप हातहतियार लिएर हिड्ने, वा

(घ) दफा ८ को बर्खिलाप जुनसुकै हातहतियार आफनो साथमा राख्ने वा आफनो नियन्त्रणमा राख्ने, वा



---

♣ दोस्रो संशोधनद्वारा संशोधित ।

(ङ) दफा ९ बमोजिम हातहतियार नबुझाउने ।

(३) देहायको कुनै कसूर गर्ने व्यक्तिलाई ♣१ वर्षदेखि ३ वर्षसम्म कैदै वा बीस हजारदेखि साठी हजार रुपैयाँसम्म जरिबाना वा दुबै सजाय हुनेछ :-

(क) दफा ३ को उपदफा (२) को बर्खिलाप खरखजाना तयार गर्ने वा मरमत गर्ने, ♣आफूसाथ राख्ने वा अन्य स्थानमा राख्ने वा राख्न लगाउने, एक रूपबाट अर्को रूपमा परिणत गर्ने, बेच्ने वा बिक्रीको लागि दिने वा राख्ने, वा

(ख) दफा ४ को उपदफा (२) को बर्खिलाप खरखजाना ल्याउने वा लैजाने, वा

(ग) दफा ८ को बर्खिलाप खरखजाना आफनो साथमा राख्ने वा आफनो नियन्त्रणमा राख्ने, वा

(घ) दफा ९ बमोजिम खरखजाना नबुझाउने ।

२१. **जानी जानी अनधिकृत व्यक्तिलाई हातहतियार वा खरखजाना दिएमा वा त्यस्तो व्यक्तिबाट खरीद गरेमा दण्ड सजाय** : (१) कुनै पनि व्यक्तिले देहायको कसूर गरेमा ♣१ वर्षदेखि तीन वर्षसम्म कैदै वा बीस हजारदेखि साठी हजार रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुनेछ :-

(क) दफा ३ को उपदफा (२) बमोजिम बिक्री गर्न अख्तियार नपाएको व्यक्तिसँग हातहतियार खरीद गरेमा, वा

(ख) हातहतियार राख्न वा खरीद गर्न अधिकार नभएको व्यक्तिलाई जानी जानी हस्तान्तरित गरेमा ।

(२) कुनै पनि व्यक्तिले देहायको कसूर गरेमा निजलाई ♣६ महिनादेखि १ वर्षसम्म कैदै वा दश हजारदेखि बीस हजार रुपैयाँसम्म जरिबाना वा दुबै सजाय हुनेछ :-

(क) दफा ३ को उपदफा (२) बमोजिम बिक्री गर्न अख्तियार नपाएको व्यक्तिसँग खरखजाना खरीद गरेमा, वा

♣ दोस्रो संशोधनद्वारा संशोधित ।

(ख) खरखजाना राख्ने वा खरीद गर्ने अधिकार नभएको व्यक्तिलाई जानी जानी हस्तान्तरित गरेमा ।

२२. <u>**लाइसेन्सको शर्त उल्लंघन गरेमा सजाय**</u> : कसैले लाइसेन्सको शर्त वा नियम उल्लघंन गरी काम गरेमा निजलाई ३ महिनासम्म कैदै वा ■<u>सातसय पचास रुपैयाँसम्म</u> जरिवाना वा दुबै सजाय हुनेछ ।

२३. <u>**अरू दण्ड सजाय**</u> : (१) दफा १८ बमोजिम कसूर गरेको काम कुरा थाहा पाई प्रमुख जिल्ला अधिकारी वा प्रहरी कार्यालयलाई सूचना नदिने प्रत्येक व्यक्तिलाई एक महिनासम्म कैदै वा ■<u>दुईसय पचास रुपैयाँसम्म</u> जरिवाना वा दुबै सजाय हुनेछ ।

(२) (क) दफा १५ अन्तर्गत तोकिएको अधिकारी छेउ हातहतियारको लगत दाखिल गर्न वा ती वस्तु देखाउन निर्देश गरिएको कुनै व्यक्तिले सो बमोजिम लगत दाखिल नगरेमा वा नदेखाएमा निजलाई एक महिनासम्म कैदै वा ■<u>दुईसय पचास रुपैयाँसम्म</u> जरिवाना वा दुबै सजाय हुनेछ ।

(ख) दफा १५ अन्तर्गत तोकिएको अधिकारी छेउ खरखजानाको लगत दाखिल गर्न वा ती वस्तु देखाउने निर्देश गरिएको कुनै व्यक्तिले सो बमोजिम दाखिल नगरेमा वा नदेखाएमा निजलाई २० दिनसम्म कैदै वा ■<u>एकसय पचहत्तर रुपैयाँसम्म</u> जरिवाना हुनेछ ।

(३) कसैले यस ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको कुनै कुरा उल्लघंन गरे वापत दण्ड तोकिएकोमा भए सोही बमोजिम र नतोकिएकोमा निजलाई एक महिनासम्म कैदै वा रु. ५०।- पचाससम्म जरिवाना वा दुबै सजाय हुनेछ ।

२४. <u>**मुद्दा हेर्ने अधिकार क्षेत्र**</u> : (१) यो ऐन अन्तर्गत सजाय हुने अपराधसम्बन्धी मुद्दा मामिला हेरी शुरु कारवाई र किनारा गर्ने अधिकार प्रमुख जिल्ला अधिकारीलाई हुनेछ ।

■ पहिलो संशोधनद्वारा संशोधित ।

(२) उपदफा (१) बमोजिम प्रमुख जिल्ला अधिकारीले दिएको अन्तिम आदेश वा फैसला उपर प्रचलित कानुनबमोजिम ?पुनरावेदन अदालतमा पुनरावेदन लाग्नेछ ।

✚२४क. **थुनामा राखी कारबाही गर्ने** : प्रचलित कानुनमा जुनसुकै कुरा लेखिएको भए तापनि यस ऐन अर्न्तगतको मुद्दाका अभियुक्तलाई तत्काल प्राप्त प्रमाणका आधारमा थुनामा राखी कारबाही गर्नु पर्नेछ ।

२५. **जाहेरवालालाई पुरस्कार दिने** : यो ऐनको प्रतिकूल कुनै काम गरे भएको कुरा जाहेर गर्ने व्यक्तिलाई निजको जाहेरीबाट चलेको मुद्दामा कसूरदारबाट उपर भएको जरिवानाको सरकारी कर्मचारी भए चौथाई र अरू भए आधा पुरस्कार दिइनेछ ।

२६. **नेपाल सरकारको नियम बनाउने अधिकार** : (१) यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियमहरू बनाउन सक्नेछ ।

(२) उपदफा (१) मा लेखिएको अधिकारको सर्वसामान्यतामा कुनै प्रतिकूल प्रभाव नपारी ती नियमहरूमा खास गरेर देहायका सबै वा केही कुराहरूको व्यवस्था गर्न सकिनेछ :-

(क) लाइसेन्स दिने हातहतियारको किसिम र संख्या तोक्ने,

(ख) हातहतियार वा खरखजानाको सम्बन्धमा दिइने लाइसेन्सको ढाँचा र लाइसेन्स दिंदाको शर्त बन्देजहरू तोक्ने,

(ग) त्यस्तो लाइसेन्स लागू हुने अवधि तोक्ने,

(घ) लाइसेन्सको दस्तुर निर्धारित गर्ने,

(ङ) प्रत्येक लाइसेन्सवालाले तोकिए बमोजिमको ढाँचामा लाइसेन्सबमोजिम काम कुरा गरेको हिसाब किताब वा लगत राख्ने, र सरकारी कर्मचारीले जाँच्न चाहेमा त्यस्तो हिसाब किताब वा लगत देखाउनु पर्ने निर्देश दिने,

? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।
✚ दोस्रो संशोधनाद्वारा थप ।

(च) प्रमुख जिल्ला अधिकारीले हातहतियार वा खरखजाना तयार हुने वा बिक्री हुने ठाउँमा प्रवेश गर्ने र जाँच निरीक्षण गर्ने वा हिसाब जाँच्ने कुनै सरकारी कर्मचारीलाई अख्तियार दिने,

(छ) लाइसेन्स बमोजिमको वस्तु तयार गर्ने वा बिक्री गर्ने व्यक्तिलाई आफ्नो साथमा रहेको वा नियन्त्रणमा रहेको हातहतियार वा खरखजाना नेपाल सरकारबाट अख्तियार पाएको व्यक्तिलाई देखाउन निर्देश दिने,

(ज) हातहतियार वा खरखजाना आफ्नो साथमा राख्ने व्यक्तिले नेपाल सरकारबाट जाँच्नको लागि अख्तियार पाएको व्यक्तिलाई लगत हिसाब दिने,

(झ) लाइसेन्स रिन्यू गर्ने व्यवस्था गर्ने,

(ञ) हातहतियार वा खरखजानाको पसल र कारखाना नेपालभित्र खोल्न दिने व्यवस्था गर्ने,

(ट) विदेशतर्फको लाइसेन्स दिने,

(ठ) कस्ता बन्दुक, राइफल, पिस्तौल र रिभाल्भर सरकारी बोरमा गणना गर्ने सो कुरा तोक्ने ।



२७. **खारेजी** : निम्नलिखित नेपाल कानुन खारेज गरिएकोछ :-

(क) सम्वत् १९६५ साल फाल्गुण २५ गते रोज २ मा सदर भएको खड्ग निशानाबमोजिम जारी भएको हातहतियार खरखजानको ऐन र समय समयमा भएको त्यसको संशोधन,

(ख) अमिनी जावताको ९९ नम्बर,

(ग) मधेश गोश्वारा ऐन, २०१२ को दफा ४,

(घ) अमिनीको सवालको दफा ५८,

(ङ) काठमाडौं उपत्यकाञ्चल कमिश्नर मेजिष्ट्रेटको सवालको दफा ४ को शिर व्यहोराको "हतियार खजाना विदेशबाट झिकाउन दिन र यहाँ भएको खरीद

गर्नेलाई लाइसेन्स गरी दिने र शिकार खेल्न पाउने पास दिने समेतको कामलाई आई.जी.पी. ले र हातहतियार घरमा राख्ने, पास दिने काम र" सम्मका शब्दहरू र खण्ड (क) र खण्ड (ख),

(च) सदर पुलिस गोश्वारा सवालको दफा १०९ र १११,

(छ) मधेश पुलिस इन्सपेक्टर सवालको दफा ६१,

(ज) ने.पु.डा.ज. अफिसको नाउँको २००२।११।१४ को तोक सदर,

(झ) २००३।११।७ को रिर्पोट सदरबमोजिम ईन्सपेक्टरको नाउँको २००३।१२।१३ को थप सवाल,

(ञ) हतियार खरखजाना विषय अन्य गैर सवाल सनद ।'



---

'

**द्रष्टव्य:**

१. स्थानीय प्रशासन ऐन, २०२२ द्वारा रुपान्तर भएका शब्दहरू:-
"बडाहाकिम वा मेजिष्ट्रेट" को सट्टा "अञ्चलाधीश" ।

२. प्रहरी (पहिलो संशोधन) ऐन, २०२९ द्वारा रुपान्तर भएका शब्दहरू :-
"असिष्टेण्ट सब ईन्सपेक्टर" को सट्टा "सहायक निरीक्षक" ।

३. नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रुपान्तर भएका शब्दहरू:-
(क) "पुलिस" को सट्टा "प्रहरी"
(ख) "अफिसर" को सट्टा "अधिकृत"
(ग) "गजेट" को सट्टा "राजपत्र"
(घ) "रिपोर्ट" को सट्टा "प्रतिवेदन"
(ङ) "अपील" को सट्टा "पुनरावेदन" ।

४. हातहतियार खरखजाना (पहिलो संशोधन) ऐन, २०४८ द्वारा रुपान्तर भएका शब्दहरू :-
"स्थानीय अञ्चलाधीश" वा "अञ्चलाधीश" को सट्टा "प्रमुख जिल्ला अधिकारी" ।

५. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।